## आफ्नै आरोप

बोल्न खोज्छु, लेख्न खोज्छु -शब्द चाहिन्छ । बुझ्न खोज्छु, बुझाउन खोज्छु -अर्थ चाहिन्छ । तर त्यहि शब्द र अर्थभित्र गहिरिएको भावनालाई भने खासै महत्व दिन सकेको रहेनछु । आरोप लेखाईको क्रममा, (बिकाशजीसँगको सहकार्यको क्रममा भनौं न) शब्द र अर्थ भन्दा बढि भावनालाई हेर्न, बुझ्न र बुझाउन चाहने भएको छु । नाटक आरोपमा पनि चरित्रहरुको भावना बुझ्न र व्यक्त गर्न चाहेको छु ।

**-असिम खनाल, लेखक**

कुनै पनि नाटक तयार गर्दा यतिविघ्न समय र एकअर्काको साथ सायदै लेनदिन भएको थियो होला, यसभन्दा अघि । 'आरोप' र विकाश सरसँगको काममा नाटकसम्बन्धी मात्र नभएर जीवनसम्बन्धी पनि सिकाई भएको छ । थाहा छैन, हजुरको भरोसा राख्न सक्छु कि सक्दिन । तर मेरो प्रयास छोड्दिन ! :)
धन्यवाद आरोप टिम ।

**-एना देउजा, कलाकार**

मेरो लागि यो यात्रा नाटकसम्मको भन्दा बढी आफूसम्मको थियो । नाटकलाई जीवनजस्तै बुझ्न सिकाउने गुरुप्रति आभारी छु । मेरो कमजोरीहरुलाई शक्तिमा बदल्ने साधनामा मेरो मार्गदर्शक बनिदिनु भएकोमा विकाश दाईलाई धेरै धेरै धन्यवाद । साथीहरुको साथ र हौसलाको लागि धन्यवाद । यो नाटकको यात्रा मेरो जीवनको सबैभन्दा प्यारो अनुभव हो ।

**-परिक्षा लामिछाने, कलाकार**

आरोप मेरा लागि नाटकभन्दा बढी एउटा ठूलो शिक्षा पाउने माध्यम भयो । विकाश जोशीसित काम गर्नु भनेको एउटा नयाँ बाटो र शिक्षा पाउनु हो । त्यसैले खुसी छु ।

**-पिटर प्रिन्स, कलाकार**

पहिलोचोटि यस्तो भएको छ-
सब थाहा हुनुभन्दा
केहि थाहा नहुनुमा
मजा आईरहेको छ ।

**-सन्दीप श्रेष्ठ, कलाकार**

नाटक आरोपमा मेरो अनुभव विशेष रह्यो । नाटकको चरित्रलाई 'कसरी आफ्नो जीवनको अनुभवसँग जोड्ने ?' भन्ने कुरा मलाई विशेष मन पर्यो । नाटकमा म स्टेजमा एकछिन मात्र छु तर ब्याकस्टेजमा काम गर्दाको मजा छुट्टै छ ।

**-सुरज श्रेष्ठ, कलाकार र मञ्च व्यवस्थापक**

**हार्दिक आभार:**
सहयोगी सम्पूर्णमा ।




**लेखन**
**असिम खनाल**

**कथा/परिकल्पना/निर्देशन**
**बिकाश जोशी**

# आरोप

**नाटक**

मितिः २०७३ भदौ १७ देखि असोज २ सम्म
समयः हरेक साँझ ५:१५ बजे (सोमबार बाहेक)
स्थानः मण्डला नाटकघर, अनामनगर, काठमाडौं
सम्पर्क नंः ०१-४२४९७६१/९८४१३५४५९७
हरेक शनिबार दिउँसो १ बजे पनि

## मञ्चमा

**सौरभी**
एना ढेउजा
**मौसमी**
परिक्षा लामिछाने
**उत्सव**
सन्दिप श्रेष्ठ
**शरद**
पिटर प्रिन्स
**सुवर्ण**
सुरज श्रेष्ठ

### नाटकको बारेमा :

समय र परिस्थितीका कारण एउटा मानिस कसरी आरोपित हुँदो रहेछ भन्ने कुराको खोज हो नाटक आरोप । समय र परिस्थितीको प्रभावले मानिसलाई पीडा र आनन्दको अनुभूति सँगसँगै गराइदिन्छ । त्यसमाथि उमेरका कारण उत्पन्न भएका प्रेम, ईर्ष्या, जलन, राग आदि भावनाहरूको वशमा परी अनेक कदमहरू चालिन्छन् । यस्ता कदमहरूले मानिसहरू बीचको सम्बन्धमा अनेकौं किसिमका उतारचढाव ल्याइदिन्छन् । त्यहि उतारचढावको अनुभव गर्ने सरोवर हो नाटक आरोप ।

### निर्देशकीय

एक निमेश जम्नु छ
पग्लनु छ, बग्नु छ
तरल बनी तात्नु छ
बाफ बनी उड्नु छ
बादल बनी बर्सिएर
झरना बनी झर्नु छ .....
आफ्नो भोगाइ र अनुभूतिहरूको संगालो हो, नाटक आरोप ।

यो नाटक बन्नका लागि प्रेरित गर्ने मेरा बहिनीहरू सुमिना खरेल जोशी र शारदा जोशीलाई हृदयभरिको माया ।
मण्डला परिवारप्रति साधुवाद ।
सम्पूर्ण शुभचिन्तकहरूलाई हार्दिक नमन । बडो आनन्दानुभूति भाछ !

**-विकाश जोशी**

## नेपथ्यमा

**मञ्च परिकल्पना:**
घनश्याम श्रेष्ठ
**मञ्च निर्माण**
हुम बि.सी., सुरेश कार्की, रामशरण रेग्मी, रोहित पौडेल, सुलक्षण भारती, अनिल कार्की, मिलन कार्की, सुदिप खतिवडा, किरण शर्मा, बिक्रम श्रेष्ठ
**मञ्च सामाग्री/वेषभुषा**
कलाकार समुह
**रंग**
शर्मिला श्रेष्ठ
**संगीत संयोजन/गीत**
श्रृति प्रधान, प्रशान्त क्षेत्री
**संगीत परिचालन**
इँगिहोपो कोइँच सुनुवार
**प्रकाश परिकल्पना**
उमेश तामाङ
**प्राविधिक सहयोगी**
इँगिहोपो कोइँच सुनुवार, रोहित पौडेल
**प्रकाश परिचालन**
सुलक्षण भारती
**पोस्टर**
घनश्याम श्रेष्ठ
**विवरण पुस्तिका**
इँगिहोपो कोइँच सुनुवार, सिजन दाहाल
**बजार व्यवस्थापन**
सिजन दाहाल, इँगिहोपो कोइँच सुनुवार, आयान खड्का, मिलन कार्की
**कार्यालय व्यवस्थापन**
सपना चौधरी
**लेखक**
असिम खनाल
**मञ्च व्यवस्थापक/कोरियोग्राफर/निर्देशन सहयोगी**
सुरज श्रेष्ठ
**कथा/परिकल्पना/निर्देशन**
विकाश जोशी